# 'बाध्यकारी अन्यलिङ्गी लेबल भिराइने विरुद्ध र लैङ्गिक पहिचानको मान्यताका लागि कार्य वर्ष ११४१' (#Actionof1141) बारे संयुक्त वक्तव्य

**२०७७ कार्तिक ४ गते, नेसं ११४१/०१/०१**

हामी, क्वयेर युथ ग्रुप, क्याम्पेन फर चेन्ज र पारलैङ्गिक अधिकार समूह (ट्रान्स राइट्स् कलेक्टिभ) संयुक्त रूपमा नेपाल संवत् ११४१लाई 'बाध्यकारी अन्यलिङ्गी लेबल भिराइने विरुद्ध र लैङ्गिक पहिचानको मान्यताका लागि कार्य वर्ष'का रूपमा घोषित गर्दछौँ। सबै लैङ्गिक पहिचानका व्यक्तिहरूका लागि कानुनी मान्यता स्थापना गर्ने र बाध्यकारी अन्यलिङ्गी लेबल भिराउने प्रचलित कानुनलाई प्रतिस्थापन गर्ने उद्देश्य बोकी हामी र हाम्रा साथै विभिन्न संस्था, समूह, कलेक्टिभ लगायत हाम्रो संजालमा रहेका व्यक्तिहरू समेत संयुक्त रूपमा यो कार्य वर्ष घोषणा गर्दछौँ।

**सन्दर्भ**

नेपालमा लैङ्गिकताको 'तेस्रो' महल थप्नका निम्ति आदेश भएको सन् २००७को सर्वोच्च अदालतको फैसलाका लागि नेपाल प्रख्यात छ। उक्त आदेश भएको १३ वर्ष बित्दा लैङ्गिकताको त्यो 'तेस्रो' महल थप्ने सम्बन्धी विभिन्न सरकारी तथा गैर-सरकारी संस्थाहरूले आ-आफ्नै ढङ्गमा अपनाएका छन्।

सन् २०१२, २०६९ सालमा गृह मन्त्रालयले यौनिक तथा लैङ्गिक अल्पसंख्यक व्यक्तिहरूलाई लिङ्गको महलमा 'अन्य' जनाई नागरिकता जारी गर्ने सम्बन्धी निर्देशिका जारी गरेको थियो। कायम रहेका दुई लैङ्गिक महल अतिरिक्त थप तेस्रो महल सम्बन्धी कतिपय निकायहरूले 'अन्य' वा 'अन्यलिङ्गी' भन्ने महल थपेका छन्, कतिले 'तेस्रोलिङ्गी' भन्ने महल थपेका छन् भने कतिले 'यौनिक तथा लैङ्गिक अल्पसंख्यक' भनी अर्को महल थपेका छन्। गृह मन्त्रालयले जारी गरेको उक्त निर्देशिका ठूलो कानुनी गल्ती मध्ये एक हो र यो हजारौँको जीवनका लागि निर्धारक बन्न पुगेको छ। उक्त निर्देशिकाले 'अन्यलिङ्गी' भन्नले 'महिला र पुरुष बाहेक यौनिक तथा लैङ्गिक अल्पसंख्यक' भनी परिभाषित गरेको छ र 'लैङ्गिक तथा यौनिक अल्पसंख्यक भन्नाले महिला समलिङ्गी (लेजबियन), पुरुष समलिङ्गी (गे), द्विलिङ्गी (बाइसेक्सुअल), तेस्रोलिङ्गी (ट्रान्सजेण्डर) र अन्तरलिङ्गी (इन्टरसेक्स)' भनी थप परिभाषित गरेको छ। सर्वप्रथम त यो







निर्देशिकाले 'यौन अभिमुखिकरण', 'लैङ्गिक पहिचान' र 'यौन विशेषता' तीन फरक-फरक विषलाई अन्योलतापूर्वक व्याख्या गरेको छ । त्यसै गरी अङ्ग्रेजीमा 'ट्रान्सजेण्डर' (पारलैङ्गिक) र नेपालीमा 'तेस्रोलिङ्गी' (थर्ड जेण्डर) भनी उल्लेख गरेकाले पारलैङ्गिक पहिचान र तेस्रोलिङ्गी पहिचान बीच थप अन्योलता सृजना गरेको छ। त्यसै गरी यस निर्देशिकामा प्रयोग गरिएका शब्दहरू पनि गलत र अन्योलतापूर्ण छन् र समग्रमा भन्नुपर्दा यस निर्देशिकाले त्याचलैङ्गिक (सिस्-जेण्डर) पहिचान भन्दा बाहिरका लैङ्गिक पहिचानहरूको मान्यता सम्बन्धीको विषयलाई सम्बोधन गर्न मूल रूपले असफल भएको छ।

नेपालको संविधानमा 'लैङ्गिक तथा यौनिक अल्पसंख्यक' भन्ने शब्दावली उल्लेख गरिएको छ । यस शब्दावलीमा टेकेर सिमान्तकृत यौन अभिमुखिकरण, लैङ्गिक पहिचान र यौन विशेषताका व्यक्तिहरूले आफ्नो अधिकार  दाबि गर्दै आएका छन्। तैपनि यो शब्दावलीको कुनै उपयुक्त कानुनी परिभाषा बन्न सकेको छैन।

नेपालको कानुनले 'यौन अभिमुखिकरण', 'लैङ्गिक पहिचान' र 'यौन विशेषता' तीन फरक-फरक विषयहरू हुन् र त्याचलैङ्गिक पहिचानको दायरमा नपर्ने सबैजाना स्वतः 'तेस्रोलिङ्गी' वा 'अन्यलिङ्गी' हुँदैनन् भन्ने कुरा बुझेकै छैन । सर्वप्रथम यस निर्देशिकाले समयौनिक महिला (लेजबियन), समयौनिक पुरुष (गे) र द्वियौनिक (बाइसेक्सुल) जस्ता 'यौन अभिमुखिकरण' (सेक्सुल ओरियन्टेशन)का विषयलाई 'लैङ्गिकता'का रूपमा अपव्याख्या गरिदिएको छ । त्यसपछी अन्तरलिङ्गी र पारलैङ्गिक व्यक्तिहरूलाई स्वतः महिला र पुरुष भन्दा फरक भनी अपव्याख्या गरिएको छ जसकारण 'अन्तरलिङ्गी' हुनु एउटा यौन विशेषता हो र अन्तरलिङ्गी यौन विशेषताका व्यक्तिहरूको लैङ्गिक पहिचान पुरुष, महिला वा गैर-द्वयसांखिक हुन सक्छ भन्ने विषयलाई बेवास्ता गरिएको छ । उक्त निर्देशिकाले पारलैङ्गिक पहिचान र तेस्रोलिङ्गी पहिचानमा अन्योलता कायम गरी पारलैङ्गिक व्यक्तिहरूलाई माथी अझै थप बोझ राखिदिएको छ जसकारण पारलैङ्गिक महिलाहरू 'महिला' र पारलैङ्गिक पुरुषहरू 'पुरुष' लैङ्गिक पहिचानकै हुन् भन्ने विषयलाई पनि बेवास्ता गरेको छ । त्यसै गरी महिला र पुरुष बाहेकका विविध लैङ्गिक पहिचानका व्यक्तिहरूलाई 'अन्य' जस्तो असंवेदनशील र विभेदकारी शब्दको प्रयोग गरिएको छ।

न्यायिक स्थापनाहरूले 'लैङ्गिक पहिचान'लाई आत्मनिर्णयको विषय भनी कायम गरेको छ - तर लैङ्गिक पहिचान सम्बन्धीका संवाद 'तेस्रोलिङ्गी' आसपास मात्र सीमित हुन गएको छ - जसले पारलैङ्गिक, अन्तरलिङ्गी, गैर-द्वयसांखिक लगायत विविध लैङ्गिक पहिचानका व्यक्तिहरूको भाष्य, आवाज र पहिचानलाई मौन पार्छ, डिस्मिस गर्छ र मेटाउँछ।

कानुनी कागजपत्र / अभिलेख, परिचयपत्र र प्रमाणपत्रहरू सम्बन्धीका कुनै पनि प्रचलित ऐन, नियमावली र कानुनमा नाम र लैङ्गिक विवरण परिवर्तन गर्ने प्रावधान छैन। यसै साल जून महिनामा नागरिकता ऐन संसोधन गर्न बनेको विधयक र राज्य व्यवस्था तथा सुशासन समितिले पारित गरेको प्रतिवेदनले लैङ्गिक पहिचानको मुद्दालाई 'तेस्रोलिङ्गी'मा खुम्च्याउने र 'चिकित्सकीय सिफारिस' आवश्यक बनाउने तयारीमा छ। व्यक्तिले आफ्नो लैङ्गिक पहिचा अनुसार परिचयपत्र पाउन र संसोधन गर्नका लागि त्यस्ता रोगिकरण र अनिच्छापूर्ण चिकित्सकीय हस्तक्षेपको शर्त राख्नु व्यक्तिको शारीरिक निष्ठा एवं मानव अधिकारको उल्लंघन र राज्य निर्देशित यातनाको स्वरूप हो।

तसर्थ प्रचलित कानुनी व्यवस्थाहरूले लैङ्गिक पहिचानको मुद्दा र व्यापक सिमान्तकृत यौन अभिमुखिकरण, लैङ्गिक पहिचान र यौन विशेषतका व्यक्तिहरूलाई सम्बोधन गर्न असफल रहेको; यौन अभिमुखिकरण, लैङ्गिक पहिचान र यौन विशेषता बीच भिन्नता छुट्याउन असफल रहेको; पारलैङ्गिक पहिचान र तेस्रोलिङ्गी पहिचान बीच अन्योलता कायम गरेको एवं 'L G B T I' व्यक्तिहरूलाई 'तेस्रो लिङ्गी' वा 'अन्यलिङ्गी' भनी चिन्ह लगाउन बाध्य बनाइएको यथार्थ स्पष्ट हुन्छ।

**यस अभियानको उद्देश्यहरू**

१) लैङ्गिक पहिचानको कानुनी मान्यता सम्बन्धी सघन, समवेशी र उपयुक्त प्रावधानहरू स्थापित गर्ने।
२) कुनै व्यक्तिले आफ्नो नाम र लैङ्गिक विवरण परिवर्तन गर्नका निम्ति रोगिकरण, अनिच्छापूर्ण चिकित्सकीय हस्तक्षेप लगायत व्यक्तिको मानव अधिकार उल्लंघन गर्ने सबै प्रकारका अपमानजनक र अमानवीय शर्तहरूको अन्त्य गरी आत्मनिर्णयको अधिकार सुनिश्चित गर्ने।
३) व्यक्तिगत लैङ्गिक इतिहास, चिकित्सकीय स्थिति र इतिहास, पारलैङ्गिक वा अन्तरलिङ्गी स्थिति लगायतका विषयमा विस्मृतिको अधिकार सहित गोपनियता हक सुनिश्चित गर्ने।
४) जानीजानी गरिने लैङ्गिक दुस्बोधन (मिस्-जेण्डरिङ) को मुद्दालाई सम्बोधन गर्ने कानुनी प्रावधान सहित व्यक्तिले इच्छाएको लैङ्गिक शब्दावलीबाट सम्बोधन गर्न र लैङ्गिक विविधता समावेशी भाषाको प्रयोग गर्न राज्यले उपायहरू अपनाउँछ भनी सुनिश्चित गर्ने।
५) नेपालको कानुनमा यौन अभिमुखिकरण, लैङ्गिक पहिचान र यौन विशेषता बारे सघन परिभाषा / बुझाई स्थापित गर्ने।
६) 'अन्यलिङ्गी' र बाध्यकारी 'तेस्रो लिङ्गी ' लेबल सम्बन्धीको प्रचलित कानुनलाई प्रतिस्थापित गर्ने।




Trans Rights Collective
पारलैङ्गिक अधिकार समूह




**साथसाथै**

१) यौन अभिमुखिकरण, लैङ्गिक पहिचान र यौन विशेषता (यौभिकयौता) बारे सघन ढङ्गमा आफूलाई जानकार बनाउन मद्दत गर्ने स्रोत सामाग्रीहरू अझै बनाउँदै जाने।

२) यौन अभिमुखिकरण, लैङ्गिक पहिचान र यौन विशेषता (यौभिकयौता) सम्बन्धी जनचेतना फैलाउने ।

**देहायका साथमा:-**

१) योग्याकार्ता सिद्धान्त (YP +10)
२) राष्ट्रिय पारलैङ्गिक मागपत्र (३१ मार्च २०२०)
३) लैङ्गिक पहिचानको कानुनी मान्यता सम्बन्धी राष्ट्रिय मागपत्र (१७ मे २०२०)
४) नागरिकता विधयकमा लैङ्गिक पहिचान सम्बन्धी मागपत्र (६ अगष्ट २०२०)
५) राष्ट्रिय अन्तरलिङ्गी मागपत्र (२६ अक्टोबर २०२०)को कुराईमा

**पूरा नाम :** बाध्यकारी अन्यलिङ्गी लेबल भिराइने विरुद्ध र लैङ्गिक पहिचानको मान्यताका लागि कार्य वर्ष ११४१, Year of Action for Recognition of Gender Identity & Against Forced Others Gender Labelling 1141

**छोटकरीमा:** ४१ सालको कार्य अभियान Action of 1141

**ह्यासट्याग:** #ActionOf1141 (प्रमुख)

(Additional): #NotTheOthers, #RepealOgender, #GenderRecognitionInNepal, #TransRightsInNepal, #IntersexRightsInNepal, #NbRightsInNepal, #४१सालकोकार्यअभियान

सिमान्तकृत यौन अभिमुखिकरण, लैङ्गिक पहिचान र यौन विशेषतका व्यक्तिहरू, र विशेष गरी पारलैङ्गिक अन्तरलिङ्गी, गैर-द्वयसांखिक लगायत विविध लैङ्गिक पहिचानका व्यक्तिहरू र ती व्यक्तिहरूद्वारा नेतृत्व गरिएका समूह / संस्था / कलेक्टिभहरूले पनि यो अभियानमा जुट्न सक्छन् । हामीलाई











Trans Rights Collective
पारलैङ्गिक अधिकार समूह






queeryouthgroup.nepal@gmail.com, transrightscollective@gmail.com वा campaignforchange17@gmail.com मा सम्पर्क गर्नुहोला।

**भवदीय,**

क्वयेर युथ ग्रुप
दर्ता नं २४४९३५/०७७/०७८

रुक्शना कपाली,
कार्यकारी निर्देशक




क्याम्पेन फर चेन्ज
दर्ता नं १६८३०१/७३/७४

इशान रेग्मी
कार्यकारी निर्देशक




पारलैङ्गिक अधिकार समूह
(ट्रान्स राइट्स् कलेक्टिभ)
फुक्का संजाल (लूज नेटवर्क)

प्रतिक थापा मगर
सदस्य

Trans Rights Collective
पारलैङ्गिक अधिकार समूह

**वेबसाइट :** https://actionof1141.wordpress.com/




Trans Rights Collective
पारलैङ्गिक अधिकार समूह

